# वार्षिक प्रगती पुस्तिका

## आ.व. २०७६/०७७











# डिभिजन वन कार्यालय




**पाल्पा, तानसेन**

सम्पर्क नं. :- ०७५-५२०००२, ५२०३१०

E-mail : paldfo@dof.gov.np


जडिबुटी भण्डारण तथा प्रशोधन केन्द्र स्थापना,
ठूलोचौर क.व


नर्सरी अनुगमन, झडेवा, माथागढ स.डि.व.का.


वन महोत्सव, २०७७, कुसुनडाँडा पार्क


विरुवा उत्पादन, तिनाउ हाई-टेक नर्सरी


विरुवा वितरण

# वार्षिक प्रगती पुस्तिका

## आ.व. २०७६/०७७





# डिभिजन वन कार्यालय




पाल्पा, तानसेन

सम्पर्क नं. :- ०७५-५२०००२, ५२०३१०

E-mail : paldfo@dof.gov.np

# दुई शब्द

जैविक विविधताका साथै संस्कृति, शिक्षा, कला, सभ्यताले समृद्ध मानिएको पाल्पा एक पहाडी जिल्ला हो । यस जिल्लाको कूल क्षेत्रफल १,३६,५९५ हेक्टर मध्ये करिब ५२ प्रतिशत वन क्षेत्रले ओगटेको छ। यो जिल्लालाई चुनढुङ्गाको लागि भण्डारणको रुपमा मानिन्छ। वनको व्यवस्थापकीय हिसाबले यस जिल्ला अन्तर्गत रहेका धेरैजसो राष्ट्रिय वन क्षेत्र सामुदायिक वन, कबुलियती वन र धार्मिक वनको रुपमा हस्तान्तरण भइसकेका छन् । आ.व. २०४७/०४८ देखि आ.व.२०७६/०७७ सम्म यस जिल्ला अन्तर्गत ७०८ वटा सामुदायिक वन दर्ता भै करीब ४१ हजार हेक्टर वन क्षेत्र सामुदायिक वनको रुपमा हस्तान्तरत भइसकेका छन् जसबाट करीब ६१,००० (केहि दोहरिएको) घरधुरीका लाभान्वित भइरहेका छन् । त्यस्तै कबुलियती वन तर्फको तथ्यांकलाई हेर्दा १२९ वटा कबुलियती वन समूह दर्ता भै १,१६५.६० हेक्टर वन क्षेत्र कबुलियती वन उपभोक्ता समूहलाई हस्तान्तरत भई १,६३१ घरधुरीका ११,३७५ उपभोक्ताहरु लाभान्वित भइरहेका छन् ।

यस कार्यालयबाट आ.व.२०७६/०७७ मा संचालित संघीय सर्शत हस्तान्तरित कार्यक्रम, प्रदेश सरकार तर्फका वन, वन्यजन्तु, जैविक विविधता संरक्षण तथा व्यवस्थापन र जडीबुटी तथा गैरकाष्ठ वन पैदावार विकास कार्यक्रम र पर्यापर्यटन विकास तथा प्रवर्द्धन कार्यक्रम समेत तर्फ कोभिड-१९ ले सिर्जित त्रासमय स्थिति तथा लकडाउन बिच पनि सन्तोषजनक रुपमा प्रगति हासिल भएको छ।

कार्यक्रम संचालन तथा प्रगति हासिल गर्ने कार्यमा डिभिजन वन कार्यालय एवं सव डिभिजन वन कार्यालयहरुमा कार्यरत सम्पूर्ण कर्मचारी, सामुदायिक वन उपभोक्ता समूह तथा कबुलियती वन उपभोक्ता समूहहरु, सरोकारवाला सरकारी तथा गैर सरकारी निकायहरुको समेत उल्लेखनिय सहयोग रहेको हुँदा वहाँहरु सबै धन्यवादका पात्र हुनुहुन्छ । कार्यालयको समग्र वार्षिक प्रगति विवरण सहित यो पुस्तिका तयार गर्ने डिभिजन वन कार्यालय, पाल्पा विकाश शाखाका सहायक वन अधिकृत श्री अनुपा सिलवाल र रेन्जर श्री यमलाल पोखे्रलको अथक मेहनतको मूल्याङ्कन गर्दै वहाँहरु लगायत पुस्तिका प्रकाशनमा सहयोग गर्नु हुने सबैलाई धन्यवाद दिन चाहन्छु ।

**धन्यबाद**

**मोहन प्रसाद पौडेल**
**डिभिजनल वन अधिकृत**
**जिल्ला वन कार्यालय,पाल्पा,तानसेन**

# विषय सूची

# पाल्पा जिल्लाको संक्षिप्त परिचय

## १. परिचय

### १.१. पाल्पा जिल्लाको संक्षिप्त परिचय

पाल्पा जिल्ला नेपालको पुरानो प्रशासनिक विभाजन अनुसार पश्चिमाञ्चल विकास क्षेत्रमा र हालको ५ नं प्रदेशमा पर्दछ। करिब करिब नेपालको मध्य भागमा अवस्थितयो जिल्लालगभग नेपालकै नक्साको आकारमा फैलिएको छ।धार्मिक र पौराणिक महत्व बोकेको कालीगण्डकी नदी, त्यस नदीको तटमा रहेका रुरु र रामनदी(राम्दी) जस्ता पवित्र स्थलहरु, नेपालको ताजमहलको रुपमा परिचित रानीमहल र विभिन्न स्थानहरुबाट देखिने मनोरम हिमश्रृङखलाहरु, ऐतिहासिक, भौगोलिक, सांस्कृतिक एवं जैविक विविधताले भरिपूर्ण यो जिल्ला स्थानीय एवं विदेशी पर्यटकका लागि आकर्षणको केन्द्रविन्दु मानिन्छ। यस जिल्लाको सदरमुकाम तानसेन नेपालकै सुन्दर नगरको रूपमा परिचित छ।यो प्रकृति, संस्कृति, कला, शिक्षा, सभ्यता, रहनसहन र जैविक विविधताले तुलनात्मक रूपमा सम्वृद्ध मध्य-पहाडी जिल्लाको रूपमा चिनिन्छ। विगतमा ६० वटा गा.वि.स. र २ वटा नगरपालिका रहेको पाल्पा जिल्लामा हाल ८ वटा गाँउपालिका र २ वटा नगरपालिका गरी १० वटा स्थानिय निकायहरु रहेका छन्।

नेपाल अधिराज्यका उत्तम हावापानी मानिने जिल्लाहरु मध्ये पाल्पा जिल्ला पनि एक हो। यस जिल्लाको तापक्रम ४ डिग्री सेन्टिग्रेड देखि ३२ डिग्री सेन्टिग्रेड सम्म पुग्दछ। वार्षिक वर्षा सरदर १९०३ मिलिलिटर हुने गरेको छ। चुरे तथा महाभारत श्रेणीमा पर्ने दक्षिण-पश्चिमबाट पूर्वोत्तर तेर्सिएका उच्च लेक-मस्याम, रिघिमा, हात्तिलुङ्ग, नुवाकोट, कौडे आदि पर्दछन्। त्यसैगरी सुके, नन्दन र सत्यवती जस्ता ताल तलैया र धार्मिक महत्व बोकेको प्रसिद्ध कालिगण्डकी नदी, मध्य पाल्पामा अवस्थित माडीफाँट लाई सिञ्चित गर्दै बगेको तिनाउ नदी यस जिल्लाका महत्वपूर्ण नदीहरु हुन भने पूर्वी पाल्पामा प्रवाहित निस्दी, पश्चिम-दक्षिण पाल्पामा प्रवाहित दोभान यस जिल्लाका अन्य महत्वपूर्ण नदीहरु हुन्।

प्राकृतिक सौन्दर्यताले भरिपूर्ण धरातलिय स्वरुप र हावापानीमा विविधताको कारण जैविक विविधतामा पनि धनी मानिने यस जिल्लाको दक्षिण भागमा उत्तरी र मध्य भागमा बढी खेती योग्य जमिन रहेको छ। यो पहाडी जिल्ला भएता पनि रामपुर, अर्गली, हुंगी, कचल, दर्पूक, सर्देवा, पूर्वखोला, भलायटार र दैलाटुङ जस्ता उर्वर फाँटहरु पनि छन्।पछिल्लो दशकहरुमा जनचेतना अभिवृद्धिका कारण व्यापक जनसहभागितामा वन संरक्षण, सम्वर्द्धन र सदुपयोगको साथै पर्यावरणीय सुधारमा टेवा पुर्याउने सामुदायिक र कबुलियति वन विकासका कार्याक्रमहरुको संचालन, वनजन्य श्रोतहरुको दिगो व्यपस्थापनले स्थानीय जनसमुदाय, वन तथा वातावरणमा सकारात्मक प्रभाव परेको देखिन्छ।

जिल्लाको कुल १,३६,५९५ हेक्टर (पञ्चवर्षिय कार्य योजना ०७५/७६ - ०८२/८३ अनुसार) क्षेत्रफल ओगटेको पाल्पा जिल्ला वन स्रोतमा धनी मानिएको छ। जिल्लाको करिव १८.३७ प्रतिशत भू-भाग चुरे क्षेत्रले ओगटेको छ। यस जिल्लाको जम्मा ७१,१७० हेक्टर (५२ प्रतिशत) क्षेत्र वनले ढाकेको छ। यो मध्ये ५३,९०६ हेक्टर (३९.४७ प्रतिशत) रुखयुक्त र १७,२६४ हे. (१२.६४ प्रतिशत) झाडीयुक्त वन रहेको छ । यस जिल्लाको ७११७० वन हेक्टर मध्ये हस्तान्तरित सामुदायिक वन ४१५१९.८ हेक्टर, कबुलियती वन १,१६५.६० हेक्टर र धार्मिक वन २६१.११ हेक्टर बाहेक जम्मा २८,२२३.५ हेक्टर वनक्षेत्र सरकारद्धारा व्यवस्थित वनको रुपमा डिभिजन वन कार्यालयबाट रेखदेख भैरहेको छ।

## १.२. डिभिजन वन कार्यालय पाल्पाः एक चिनारी

वि.स. २०४० सालमा जिल्ला वन कार्यालय, पाल्पाको स्थापना हुनु पूर्व तत्कालीन लुम्विनी वन डिभिजन कार्यालय, भैरहवा अन्तर्गतको होलाङ्दीमा रहेको पाल्पा रेञ्ज कार्यालयवाट र सो अन्तर्गतका वीटहरुवाट यस जिल्लाको वन सम्वन्धी क्रियाकलापहरु संचालन गरिन्थ्यो। वि.सं.२०४० सालमा वनको संगठनलाई विकेन्द्रीकरणको सिद्धान्त अनुसार संचालन गर्न सघाउ पुऱ्याउन वन डिभिजन कार्यालय खारेज गरी ७५ वटै जिल्लामा जिल्ला वन कार्यालयको स्थापना गर्ने सिलसिलामा यस जिल्लामा पनि २०४० सालमै यस जिल्ला वन कार्यालयको स्थापना भयो। जिल्लालाई ३ गोटा इलाका वन कार्यालय (देउराली, तानसेन, र रामपुर) मा विभाजन गरी प्रत्येक इलाका अन्तर्गत ४ वटा इकाई वन कार्यालय स्थापित भए। त्यसैगरी २०५० सालमा भएको नयां संगठनात्मक परिवर्तन बमोजिम साविकका ३ वटा इलाका वन कार्यालय र इकाई वन कार्यालयहरु खारेज गरी एउटा इलाका वन कार्यालय र ८ गोटा रेञ्जपोष्टहरु कायम गरिए। २०७० को वन संगठन अनुसार यस जिल्ला अन्तर्गत १ वटा सेक्टर वन कार्यालय र ८ वटा इलाका वन कार्यालय कायम गरियो।

देशमा संघीयता लागु भए पश्चात २०७५साल साउन महिना देखी जिल्ला वन कार्यालय खारेज गरी ७७ वटै जिल्लामा ८४ वटा डिभिजन वन कार्यालयको स्थापना गरियो र यसै सिलसिलामा यस जिल्लामा पनि जिल्ला वन कार्यालय खारेज भई डिभिजन वन कार्यालयको स्थापना भयो। हाल डिभिजन वन कार्यालय अन्तर्गत ८ वटा सव डिभिजन वन कार्यालयहरु कायम गरिएका छन्।

### तालिका न. १ सव डिभिजन वन कार्यालयहरुको कार्यक्षेत्र

| क्र.स. | सव डिभिजन वन कार्यालयहरु | मुकाम | कार्याक्षेत्र |
|---|---|---|---|
| १ | रामपुर स.डि.व.का | रामपुर | रामपुर नगरपालिका |
| २ | तानसेन स.डि.व.का | तानसेन | तानसेन नगरपालिका, बगनासकाली गाउँपालिका |
| ३ | निस्दीस.डि.व.का | मित्याल | निस्दी गाउँपालिका |
| ४ | रम्भा स.डि.व.का | ताँहु | रम्भा गाउँपालिका, पूर्वखोला गाउँपालिका |
| ५ | माथागढी स.डि.व.का | झडेवा | माथागढी गाउँपालिका |
| ६ | तिनाउ स.डि.व.का | दोभान | तिनाउ गाउँपालिका |
| ७ | रिब्दिकोट स.डि.व.का | हार्थोक | रिब्दिकोट गाउँपालिका, रैनादेवी छहरा (१-५) |
| ८ | रैनादेवी छहरा स.डि.व.का | बल्डेङ्गढी | रैनादेवी छहरा गाउँपालिका (६, ७, ८) |

*श्रोतः डि.व.का. पाल्पा*




नक्सा नं १ डिभिजन वन कार्यालय, पाल्पा अन्तर्गतका सव डिभिजन वन कार्यालयहरुको कार्याक्षेत्र तथा कार्यालयको नक्सा

## सांगठनिक संरचना तथा कर्मचारी दरबन्दी

यस डिभिजन वन कार्यालय, पाल्पामा जम्मा कर्मचारी दरबन्धी ६१ जनाको छ। यस कार्यालयको संगठनात्मक स्वरुप तथा कर्मचारी दरबन्दी निम्न अनुसार प्रस्तुत गरिएको छ।

### तालिका २ कर्मचारी दरबन्दी

| क्र.स. | पदको नाम | तहरश्रेणी | सेवा | समूह | जम्मा स्वीकृत दरबन्दी संख्या | पदपूर्ति संख्या | | रिक्त | कैफियत |
|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | स्थायी | करार | | |
| १ | डिभिजनल वन अधिकृत | रा.प.द्धि.(प्रा.) | वन | जनरल फरेष्ट्रि | १ | १ | ० | | |
| २ | सहायक वन अधिकृत | रा.प.तृ.(प्रा.) | वन | जनरल फरेष्ट्रि | ११ | ११ | ० | | १ जना अध्ययन बिदा र १ जना मुख्यमन्त्री कार्यालयमा काजमा रहेको र १ जना निलम्बन |
| ३ | इन्जिनियर | रा.प.तृ.(प्रा.) | इं | मेकानिकल | १ | ० | १ | | |
| ४ | रेन्जर | रा.प.अ.प्र.(प्रा.) | वन | जनरल फरेष्ट्रि | १ | १ | ० | | |
| ५ | नायव सुब्वा | रा.प.अ.प्र.(अप्रा.) | प्रशासन | सा.प्र. | १ | १ | ० | | |
| ६ | लेखापाल | रा.प.अ.प्र.(अप्रा.) | प्रशासन | लेखा | १ | १ | ० | | |
| ७ | खरिदार | रा.प.अ.द्धि.(अप्रा) | प्रशासन | सा.प्र. | १ | ० | ० | १ | |
| ८ | व.का.स.,फरेष्टर | रा.प.अ.द्धि.(प्रा.) | वन | जनरल फरेष्ट्रि | २ | ७ | ० | | ५ जना कामकाज र २ जना दरबन्दीमा रही कार्यरत रहेको |
| ९ | वन रक्षक | श्रेणी विहिन | वन | जनरल फरेष्ट्रि | ३३ | ३२ | १ | | १ जना करारमा |
| १० | हलुका सवारी चालक | श्रेणी विहिन | प्रशासन | सा.प्र. | १ | ० | १ | | १ जना करारमा |
| ११ | कार्यालय सहयोगी | श्रेणी विहिन | प्रशासन | सा.प्र. | २ | १ | १ | | १ जना करारमा |
| १२ | हवल्दार | श्रेणी विहिन | बिबिध | | १ | ० | | १ | |
| १३ | शसस्त्र वन रक्षक | श्रेणी विहिन | बिबिध | | ४ | ० | | ४ | |
| १४ | चौकिदार | श्रेणी विहिन | प्रशासन | सा.प्र. | १ | १ | ० | | |
| | | | | | ६१ | ५६ | ४ | ६ | |

## कार्यालयको संगठनात्मक स्वरुप




## १.३. डिभिजन वन कार्यालय पाल्पाको वार्षिक कार्यक्रमहरु

डिभिजन वन कार्यालय, पाल्पाको आ.व. ०७६/७७ को स्विकृत बार्षिक कार्यक्रम अनुसार प्रदेश सरकार, ५ नं. प्रदेश, उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालयबाट स्विकृत कार्यक्रम र संघीय सरकारबाट हस्तान्तरित कार्यक्रम गरि दुई किसिमका कार्यक्रमहरु प्राप्त भएका थिए। प्रदेश सरकारबाट स्विकृत कार्यक्रमहरु मध्येमा वन तथा वातावरण, जडिबुटी विकास एवं पर्यटनसँग सम्बन्धित गरि तीन किसिमका कार्यक्रमहरु रहेका थिए भने संघीय सशर्त तर्फ जडीबुटी विकास कार्यक्रम, राष्ट्रिय वन विकास तथा ब्यबस्थापन कार्यक्रम, वातावरण बिभाग जस्ता कार्यक्रमहरुको लागि बजेट बिनियोजन भई आएको थियो। कार्यक्रमगतरुपमा प्रदेश सरकारबाट स्विकृत कार्यक्रमहरु तपसिल बमोजिम रहेका छन्ः

- प्रदेश सरकारको वन तथा वातावरण संरक्षण अन्तर्गत जैविक विविधता संरक्षण, सूचना केन्द्र व्यवस्थापन, अध्ययन अनुसन्धान, वैज्ञानिक वन व्यवस्थापन, वृक्षारोपण, विरुवा उत्पादन, नर्सरी मर्मत, सिमसार क्षेत्र व्यवस्थापन, सा.व.उ.स गठन, सा.व.उ.स. कार्ययोजना नविकरण, क.व.उ.स गठन, क.व.उ.स नविकरण, क.व.उ.स. मा वृक्षारोपण, प्रचार प्रसार, डढेलो नियन्त्रण, वन्यजन्तु उद्धार, मुद्धा तहकिकात तथा अनुसन्धान, विभिन्न सचेतनामूलक गोष्ठी, तालिम, आदि।
- प्रदेश सरकारको जडिबुटी विकास कार्यक्रम अन्तर्गत पोलिटनल ड्रायर खरीद गरी किसानहरुलाई वितरण, कर्मचारी तथा किसान अध्ययन अवलोकण भम्रण, जडिबुटी रोपण तालिम, नर्सरी नाइके तालिम, जडिबुटी उद्यमीलाई प्रोत्साहन, आदि।
- संघीय सशर्त अन्तर्गत राष्ट्रिय वन विकास कार्यक्रम, जडिबुटी विकास कार्याक्रम, वैज्ञानिक वन व्यवस्थापन, वातावरण सम्बन्धि कार्यक्रम, वन डढेलो व्यवस्थापन, वन अतिक्रमण नियन्त्रण, आदि।
- सदुपयोग अन्तर्गत निजी आवादीबाट काठ उत्पादन, बिक्रि-वितरण, तेजपात तथा दालचिनी बोक्रा उत्पादन तथा बिक्रि-वितरण, मुद्दा अनुसन्धान तथा दायरी कार्यक्रमहरु संचालन भएका छन्। आ.व. ०७६/०७७ मा निजी आवादीबाट ७,३५,८४४ के.जी तेजपात र २,३०,८५८ के.जी दालचिनी बोक्रा उत्पादन भई निकासी भएको छ। त्यस्तै निजी आवादीबाट ३६,४०६.१४ क्यू.फिट काठ र १६.५६ चट्टा दाउरा उत्पादन भई निकासी भएको छ। गत आ.व.०७५/०७६ भन्दा ४४% ले काठ विक्रि वितरण घटेको छ।

# डिभिजन वन कार्यालय पाल्पाको प्रगती विवरण: समिक्षा

डिभिजन वन कार्यालय, पाल्पाको आ.व. ०७६/७७ को स्विकृत बार्षिक कार्यक्रम अनुसार प्रदेश सरकार, ५ नं. प्रदेश, उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालयबाट स्विकृत कार्यक्रम र संघीय सरकारबाट हस्तान्तरित कार्यक्रम गरि दुई किसिमका कार्यक्रमहरु प्राप्त भएकामा तोकिएको बमोजिमका कृयाकलापहरु सम्पन्न भई उत्साहजनक रुपमा प्रगती हासिल भएको छ यद्यपि कार्य सम्पन्न गर्ने शिलशिलामा प्राप्त अनुभवको आधारमा कहि महत्वपूर्ण उपलब्धिहरु समेत कार्यालयले हासिल गरेको छ भने आगामी आ.व. को लागि केहि महत्वपूर्ण सिकाईहरु समेत प्राप्त भएका छन् ।

**चालु आ.व.०७६/७७ मा हासिल भएका केहि महत्वपूर्ण उपलब्धिहरु :**

**संघीय सरकारद्धारा हस्तान्तरित सशर्त कार्यक्रम तर्फ :**

- डिभिजन वन कार्यालय पाल्पाको कार्यक्रम मार्फत गरि निस्दी गाउँपालिका वडा नं. ४ मा २ वटा र पूर्बखोला गाउँपालिका वडा नं. २ मा १ गोटा जडीबुटी संकलन तथा भण्डारण केन्द्र स्थापना तथा रिब्दीकोट गाउँपालिका वडा नं. ७ मा निर्मित जडीबुटी संकलन केन्द्र भवन मर्मत कार्य सम्पन्न भएको छ।
- पूर्वी पाल्पाको निस्दी गाउँपालिका अन्तर्गत साविक अर्चले गा.वि.स.को खोरिया फँडानी तथा हैसियत बिग्रिएको वनक्षेत्रलाई प्रतिनिधि सभा, निर्वाचन क्षेत्र विकास कार्यक्रम समेतको सहयोगमा गत आ.व.मा हस्तान्तरित १५ वटा कबुलियती वनमा जडीबुटी तथा गैह्रकाष्ठ वन पैदावार रोपण तथा खेती बिस्तार कार्यलाई अभियानको रुपमा अगाडी बढाईएको छ। उक्त कार्यक्रमको लागि चालु आ.व. मा रु. १५ लाख बजेट बिनियोजन गरी टिमुर र कागती खेती बिस्तार अभियानलाई निरन्तरता दिईएको छ।
- टिमुर खेतीको लागि प्रचुर सम्भावना बोकेको रिब्दीकोट गाउँपालिका वडा नं. ६ र ७ को राष्ट्रिय वनक्षेत्रलाई उत्पादनशिल बनाउँदै आयमुलक टिमुर, तेजपात र अम्रिसो रोपणको कार्यलाई अघि बढाउन रिब्दीकोट गाउँपालिका र प्रधानमन्त्री रोजगार कार्यक्रम समेतको सहयोगमा गत आ.व. मा बृहत रुपमा जडीबुटी रोपण कार्यको सुरुवात गरिएको मा चालु आ.व.मा समेत खेती बिस्तार प्रनरोपण कार्यलाई निरन्तरता दिईएको छ। उक्त क्षेत्रका ६ वटा कबुलियती वन समूहको क्षेत्र बिस्तार गरि ब्यबस्थापनको जिम्मा दिने गरि कार्य अगाडि बढेको छ। बिपन्नमुखि जिविकोपार्जनको क्षेत्रमा यस कार्यक्रमलाई महत्वपूर्ण उपलब्धिको रुपमा हेरिएको छ।
- काजीपौवा सामुदायिक वन, ता.न.पा.-७ स्थित कुसुनडाँडा पार्कमा शहरी हरित पार्क स्थापना कार्यक्रम सम्पन्न गरिएको छ, जसमा तानसेन नगरपालिका समेतले ५० प्रतिशत रकम साझेदारी गरी कुल रु. १० लाख बजेटमा कार्य सम्पन्न गरिएको छ। कैलाश वसन्त सामुदायिक वन तानसेन न.पा.-३, भूतखोला सा.व. तिनाउँ-३, कटौजेपानी सामुदायिक वन, रैनादेवी छहरा-५ र भूसलडाँडा सामुदायिक वन, ता.न.पा.-१, पाल्पामा पर्यापयृटन प्रवर्द्धन कार्यक्रम सञ्चालन गरिएको छ। यसबाट आन्तरिक पर्यटनमा टेवा पुग्नुको साथै पर्यपर्यटन प्रवर्द्धनमा उपभोक्ताहरुको समेत उत्साहजनक सहभागिता रहेको छ।
- वन तथा भू-संरक्षण बिभागको राष्ट्रिय बृक्षारोपण कार्यक्रम अन्तर्गत वनजन्य प्रजातीका ४२,००० र फलफूलजन्य ३५०० गोटा गरी ४५,५०० गोटा बिरुवा खरीद गरी बृक्षारोपण कार्य सम्पन्न गरिएको छ।
- चालु आ.व. को पौष-माघ महिनामा यस जिल्लामा नमुनाको रुपमा ७,५०० गोटा दाँते औँखरको बिरुवा खरिद गरी उच्च महाभारत क्षेत्र जस्तै : रिब्दीकोट, अर्चले, कौडेलेक (ओलेस), झडेवा आदि बिभिन्न स्थानमा कबुलियती वनहरुमा रोपण गरिएकोमा अत्यन्त सफल रुपमा हुर्किरहेको र औँखर प्रजातीको बृक्षारोपण ९० प्रतिशत भन्दा बढी सफल रहेको।

## प्रदेश सरकारद्धारा हस्तान्तरित कार्यक्रम तर्फ :

- सिमसार क्षेत्र संरक्षण तथा ब्यबस्थापन कार्यक्रम अन्तर्गत तानसेन नगरपालिका वडा नं.-७ स्थित प्रभाश ताल, तिनाउँ गाउँपालिका वडा नं. २ स्थित बँदेलपोखरी सामुदायिक वन र माथागढी गाउँपालिका वडा नं. ८ स्थित सत्यवती तालमा सिमसार क्षेत्र संरक्षण एवं ब्यबस्थापनका क्रियाकलापहरु सम्पन्न गरिएको छ। प्रदेश सरकार तर्फको यो कार्यक्रम अत्यन्त लोकपृय कार्यक्रमको रुपमा रहेको छ भने प्रत्येक क्रियाकलापमा सम्बन्धित स्थानीय तहको ५०-५० प्रतिशत आर्थिक साझेदारीमा कार्य गरिएको छ। प्रभास ताल सिमसार क्षेत्र ब्यबस्थापनको लागि जिल्ला समन्वय समिती, पाल्पाबाट समेत सहयोग प्राप्त भएको छ।
- गत आ.व.मा निस्दी खोला किनारमा बाँस रोपण कार्य सम्पन्न भएकोमा चालु आ.व.मा पूनः रोपण कार्य समेत सम्पन्न भएको छ। नदी कटान नियन्त्रण, भू-संरक्षण एवं वातावरणीय संरक्षणको हिसावले यो कार्यलाई समेत महत्वपूर्ण उपलब्धिको रुपमा हेरिएको छ।
- तिनाउ सब डिभिजन वन कार्यालय अन्तर्गत तिनाउँ-३, भूतखोलामा स्थापित उच्च प्रबिधियुक्त नर्सरीको मर्मत र थप ब्यबस्थापन कार्य चालु आ.व.मा गरिएको छ। प्रदेश सरकार तर्फको कार्यक्रमको प्रथमिकता प्राप्त यो नर्सरी डिभिजन वन कार्यालय अन्तर्गतको बिरुवा उत्पादनको केन्द्र बनाउने गरि कार्य अगाडि बढाईएको छ।
- संकटापन्न तथा लोपोन्मुख वनस्पतिको बासस्थान संरक्षण कार्यक्रम अन्तर्गत रिब्दीकोट गाउँपालिकामा लोपोन्मुख चाँप प्रजातीको संरक्षण र ब्यबस्थापन साथै अभिलेखिकरणको कार्यक्रम अगाडि बढाईएको छ।
- सडक सौन्दर्यीकरण कार्यक्रम अन्तर्गत शहरोन्मुख र पर्यटकिय हिसावले महत्वपूर्ण रामपूर नगरक्षेत्रमा रामपूर नगर पालिका समेतको साझेदारीमा अशोक, गोल्डमोहर, कपूर लगायतका सौन्दयृमूलक प्रजातीका बिरुवाहरु बृक्षारोपण कार्य सम्पन्न भएको छ।
- प्रदेश सरकारको कार्यक्रम समेतबाट जडीबुटी लगायत बिभिन्न बहुउपयोगी प्रजातीका २,५५,००० गोटा बिरुवा उत्पादनको लक्ष्य रहेकोमा २,६४,००० गोटा बिरुवा उत्पादन गरि सामुदायिक वन उपभोक्ता समूह, कबुलियती वन, निजी जग्गा एवं सार्वजनिक जग्गाहरुमा रोपणको लागि वितरण गरिएको छ।
- बृक्षारोपण कार्यक्रम अन्तर्गत रिब्दीकोट गाउँपालिका अन्तर्गत वडा नं. ८ को फेकमा ३.०० हेक्टर, रामपूर-४ स्थित नमुना महिला सा.व.मा १.० हेक्टर, माथागढी-७ स्थित थामडाँडा सा.व.मा १.५ हेक्टर, तिनाउँ गा.पा. वडा नं. ६ स्थित देबीस्थान जुलडाँडा सा.व.मा १.५ हेक्टर र सत्यवती सा.व. तिनाउँ-४, पाल्पामा ३.५ हेक्टर गरी जम्मा १०.५ हेक्टर क्षेत्रफलमा १४,९०० गोटा परिपक्व अवस्थाका रुखजन्य तथा गैत्काष्ठ वन पैदावार प्रजातीका बिरुवाहरु बृक्षारोपण कार्य सम्पन्न भएको छ।
- कृषि वन बिस्तार कार्यक्रम अन्तर्गत तिनाउँ-४ पाल्पामा रु. १.५ लाख बजेट बिनियोजन गरि ८०० बोट केरा र १२०० बोट तेजपात बृक्षारोपण गरी कृषि वन प्रवर्द्धनमा सहयोग गरिएको छ। पाल्पा जिल्लामा निजी तथा कृषि वन प्रवर्द्धन कार्यक्रम समेत प्रभावकारी बन्दै गईरहेको छ।

## प्रदेश सरकारद्धारा हस्तान्तरित पर्यटन तर्फको कार्यक्रम :

- तानसेन श्रीनगरमा सांस्कृतिक डबली निर्माणको बहुबर्षीय आयोजनको ठेक्का सम्झौता भई गत आ.व. देखि कार्य अगाडि बढेकोमा चालु आ.व.मा उल्लेख्य प्रगती हासिल भई निरन्तर रुपमा कार्य भईरहेको छ।
- नुवाकोट गढीमा सांस्कृतिक डबली निर्माणको लागि ठेक्का सम्झौता कार्य सम्पन्न भएको छ।

- नुवाकोट देखि बल्ढेङ्गढी सम्म पदमार्ग निर्माणको लागि ठेकका भई पुर्बाधार विकास कार्यालय समेतको समन्वयमा कार्य भईरहेको छ।
- राम्चेमा पर्यटकीय पूर्बाधार निर्माणको लागि ठेक्का मार्फत कार्य सम्पन्न भईसकेको छ।
- रम्भा-१ ऐतिहासिक रमणेश्वर मन्दिरको सौन्दर्यीकरण कार्यक्रम अन्तर्गत सिमाना छुट्याई तारजाली लगाउने कार्य सम्पन्न भएको छ।
- शहिद चुनुमाया पार्क, तिनाउँ-३, पाल्पाको पूर्वाधार निर्माण कार्य चालु आ.व.को स्विकृत बजेट मार्फत सम्पन्न भएको छ।
- जनशिवालय मन्दिर बगनाशकाली-९, पाल्पाको धार्मिक पूर्बाधार निर्माण कार्य सम्पन्न भएको छ।
- लिपिनदेबी मन्दिर, तानसेन न.पा.-११, पाल्पाको पूर्वाधार निर्माण कार्य सम्पन्न भएको छ।
- तिनाउँ-४ स्थित मगर संग्राहलय निर्माण अन्तर्गत आंशिक कार्य भएको छ।
- माथागढी मन्दिर सम्म पुग्ने पैदल मार्ग निर्माण गरिएको छ।
- रम्भा क्षेत्रमा पर्यटन सूचना केन्द्र निर्माण गरिएको छ भने रिमिघा क्षेत्रमा गेट निर्माण लगायतका कृयाकलापहरु आंशिक रुपमा सम्पन्न भएका छन्।
- तिलानाथ पार्क, रैनादेवी छहरा-४ पाल्पामा पर्यटकिय पूर्बाधार निर्माण गरिएको छ।
- रिब्दीकोट-जलेश्वर मन्दिरमा पर्यटकिय पूर्बाधार निर्माण अन्तर्गत पानी ट्याङ्की निर्माण लगायतका कार्यहरु सम्पन्न भएका छन्।
- भैरवस्थान मन्दिरमा धार्मिक पूर्बाधार निर्माण अन्तर्गत कलात्मक प्रवेशद्धार निर्माण कार्य भईरहेको छ।
- महामृत्यूञ्जय शिवाशन मन्दिर र माईथान महामृत्यूञ्जय शिवासन मन्दिर बगनाशकाली-९ पाल्पामा धार्मिक पूर्बाधार निर्माण कार्य आंशिक सम्पन्न भएका छन्।
- देवीस्थान मन्दिर बगनाशकाली-९ मन्दिरमा पूर्बाधार विकास अन्तर्गत शौचालय निर्माण भएको छ।
- दुर्गा मन्दिर रामपूरको पूर्बाधार निर्माणको लागि बिभिन्न कृयाकलापहरु सम्पन्न भएका छन्।
- हुँगी पर्यटकिय पूर्बाधार विकास अन्तर्गत लक्ष्मीनारायण पिपल संरक्षण धाम मार्फत पूर्बाधार निर्माण कार्य सम्पन्न भएको छ।
- माथागढी-२ स्थित पिपलडाँडामा पर्यटकीय पूर्बाधार निर्माण कार्यक्रम अन्तर्गत चौतारो, शौचालय लगायतका संर चनाहरु निर्माण सम्पन्न भएको छ।
- जिल्लाका बिभिन्न पर्यटकीय पूर्बाधार योजना अन्तर्गत ११ वटा योजनाहरुको बिस्तृत गुरुयोजना सहित डि.पि.आर. निर्माण गरिएको छ।

### सम्पन्न हुन नसकेका केहि कृयाकलापहरु :

बिश्वब्यापी महामारीको रुपमा देखा परेको नोबेल कोरोना भाईरस (ऋयखष्म(ज्ञढ) को बिषम परिस्थितीमा समेत उल्लेख्य कार्य प्रगती हासिल गर्न सफल भएता पनि केही कृयाकलापहरु शत प्रतिशत रुपमा सम्पन्न हुन नसकेको देखिदैन। जस्तै : नुवाकोट सांस्कृतिक डबलीको ठेक्का सम्झौता मात्र सम्पन्न भएको, मगर संग्राहलय, रिमिघा पयृटकिय पूर्बाधार, रिब्दीकोट पर्यटकिय पूर्बाधार, महामृत्यूञ्जय शिवासनमा पर्यटन पूर्बाधार निर्माण लगायतका केही योजनाहरु सम्पन्न हुन नसकी आंशिक रुपमा मात्र कार्य प्रगती हासिल भएको छ।

## कार्यक्रम कार्यान्वयनमा देखिएका केहि समस्याहरु

- पर्यटन तर्फ सञ्चालित कार्यक्रमहरु यस कार्यालयको लागि सिकाईको रुपमा नै रहेको र यस सम्बन्धि प्रयाप्त दक्ष जनशक्तिहरु समेत यस कार्यालयमा नरहेको हुँदा लागत ईष्टिमेट, मूल्याङ्कन, डिजाईन लगायतका कार्यहरु समयमै सम्पन्न गर्नको लागि केहि कठिनाई रहेता पनि इन्जिनियर तथा स्थानीय तहहरुसँग समन्वय गरि तत्- तत् निकायका प्राबिधिक कर्मचारीहरुको सहयोगमा समयमै कार्य सम्पन्न हुन सकेको छ।
- कार्यक्रम र अख्तियारी समयमै प्राप्त हुन नसक्दा चौमासिक बिभाजन अनुसारको कार्य समयमै सम्पन्न भई पेश्की फछ्यौँट तथा भुक्तानीमा समस्या सिर्जना भएको छ।
- केहि ठेक्काबाट सम्पन्न गर्नुपर्ने कामहरु (जस्तै : नुवाकोट सांस्कृतिक डबली बहुबर्षीय आयोजना, बल्डेङ्गगढी पदमार्ग निर्माण) को लागि सार्वजनिक खरिद ऐनको प्रकृया पुरा गर्दागर्दै आर्थिक बर्षको अन्त्यमा मात्र ठेक्का सम्झौता गर्न सफल भईएको। आ.व. का. अन्त सम्ममा पनि निर्माण कार्य सुरु हुन नसकेको।
- सामुदायिक वन तथा कबुलियती वन समूहका उपभोक्ताहरुमा लेखा प्रणली लगायत कागजात तयार गर्ने क्रममा न्यून जानकारी भएको कारण निर्णय, सम्झौता, पेश्की, भुक्तानी लगायतका कार्यहरुमा केहि समस्या भएता पनि यस कार्यालयको प्राबिधिक सहयोगमा सहजीकरण गरि कार्य सम्पन्न गरिएको।
- चौमासिक लक्ष्य अनुसार कार्यभार तोकि सब डिभिजन वन कार्यालयहरुलाई कार्यक्रम कार्यान्वयनको लागि कार्यादेश भएकोमा वन संरक्षण, ब्यबस्थापन लगायतका कार्यहरुको कार्यबोझ र प्रयाप्त जनशक्ति अभावले गर्दा तोकिएको चौमासिकमै कार्य सम्पन्न हुन नसकि म्यादथप गर्नुपर्ने अवस्था सिर्जना भएको।

## सिकाईको आधारमा केहि सुधार गर्नुपर्ने पक्षहरु

- पर्यटनसँग सम्बन्धित कृयाकलापहरु सञ्चालन गर्नुपर्ने सन्दर्भमा कम्तिमा एक जिल्लामा एकजना सिभिल ईन्जिनियर दर्जाको कर्मचारी व्यवस्थापन गर्नुपर्ने।
- पर्यटन सँग सम्बन्धित कार्य सञ्चालनको लागि कर्मचारीहरुलाई आवश्यक तालिमको ब्यबस्था गरिनुपर्ने।
- उपभोक्ता समिति मार्फत सञ्चालन हुने कृयाकलापहरुको सम्झौतामा आवधिक रुपमा प्रगती प्रतिवेदन पेश गर्ने कार्यलाई कडाईका साथ कार्यान्वयन गराउने।
- बिस्तृत परयोजना प्रतिवेदन (डि.पि.आर.) तयारी लगायतका कार्यहरु कार्यालयले नै आवश्यक प्रक्रिया पूरा गरि परामर्शदाताहरु मार्फत सम्पन्न गराउने। उपभोक्ता समिति मार्फत हुने कार्यहरु समितिले समेत ठेक्का लगाउने कार्यलाई निरुत्साहित गर्ने।

## संघीय सरकारद्धारा हस्तान्तरित सशर्त कार्यक्रम

**पूँजीगत शिर्षकका कार्यक्रमहरु तर्फ :**

### (१) राष्ट्रिय वन विकास तथा व्यवस्थापन कार्यक्रम तर्फ :

**१.१. क्रियाकलापको नाम :वन अतिक्रमण हटाई व्यबस्थापन (वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : २ प्याकेज
- विनियोजित वजेट रकम रु. : २,००,०००/-
- प्रगति : २ प्याकेज
- खर्च रकम रु. : १,२९,९२४.६४/- (सरोकारवालाहरुसंग गोष्ठी, गस्ती परिचालन)
- कार्य संचालन/सम्पन्न भएको स्थान : डिभिजन वन कार्यालय तथा सव डिभिजन वन कार्यालय अन्तर्गत

**१.२. क्रियाकलापको नाम : पर्या पर्यटन प्रवर्धन (वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : ४ संख्या
- विनियोजित वजेट रकम रु. : ८,००,०००/-
- प्रगति : ४ संख्या
- खर्च रकम रु. : ८,००,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान :

| सि.नं | सा.व.उ.स.को नाम | ठेगाना | कैफियत |
|---|---|---|---|
| १ | कैलाश वसन्त सा.व.उ.स | तानसेन न.पा.-३ | |
| २ | भुषलडाँडा सा.व.उ.स | तानसेन न.पा.-१ | |
| ३ | भुतखोला सा.व.उ.स | तिनाउ गा.पा.-३ | |
| ४ | कटौजेपानी सा.व.उ.स | रैनादेवी छहरा गा.पा.-५ | |

**१.३. क्रियाकलापको नाम : सामुदायिक वनमा वैज्ञानीक वन व्यबस्थापन (वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : २ संख्या
- विनियोजित वजेट रकम रु. : ८,००,०००/-
- प्रगति : २ संख्या
- खर्च रकम रु. : ८,००,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान :

| सि.नं | सा.व.उ.स.को नाम | ठेगाना | कैफियत |
|---|---|---|---|
| १ | देउराली भन्ज्याङ सा.व.उ.स | माथागढी गा.पा. | |
| २ | ठूलो सालघारी सा.व.उ.स | तिनाउ गा.पा.-६ | |

**१.४. क्रियाकलापको नाम : अग्नी नियन्त्रण सम्बन्धि सामग्री, उपकरण तथा सामान खरिद एवं वितरण (वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : १ सेट
- विनियोजित वजेट रकम रु. : २,००,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : १,९९,८९१/- (फरेष्ट्री सप्लायर्स, बुटवल)

**१.५. क्रियाकलापको नाम : फलफुल विरुवा उत्पादन, वृक्षारोपण वर्ष (वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : १०००० वटा
- विनियोजित वजेट रकम रु. : १०,००,०००/-
- प्रगति : १००५ (बित्तिय) (ओखर, सुन्तला, कागती लगायतका विरुवा खरीद गरिएको)
- खर्च रकम रु. : ९,९७,५४०/-
- कार्य संचालन/सम्पन्न भएको स्थान : डिभिजन वन कार्यालय

**१.६. क्रियाकलापको नाम : अन्य विरुवा उत्पादन, वृक्षारोपण वर्ष (वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : १०००० वटा
- विनियोजित वजेट रकम रु. : ५,००,०००/-
- प्रगति : १००% बित्तिय, १०,००० हजार वटा (बिभिन्न प्रजाती)
- खर्च रकम रु. : ५,००,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान : तिनाउ स.डि.व.का., हाईटेक नर्सरी

## (२) जडीबुटी विकास कार्यक्रम

**२.१. क्रियाकलापको नाम : जडीबुटी उत्पादन, खेती विस्तार, भण्डारण (वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : ५ समुह
- विनियोजित वजेट रकम रु. : १०,००,०००/-
- प्रगति : ८ समुह
- खर्च रकम रु. : १०,००,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान :

| सि.नं | समूहको नाम | ठेगाना | कैफियत |
|---|---|---|---|
| १ | कोहलडाँडा र आर्यगौडा क.व.उ.स | माथागढी गा.पा. ४ | २,००,०००/- |
| २ | कृतकिडाँडा क.व.उ.स | निस्दी गा.पा. ७ | २,००,०००/- |
| ३ | रातुखोरच र करङभञ्ज्याङ क.व.उ.स | माथागढी गा.पा. ४ | २,००,०००/- |
| ४ | ढोलीमारा र बेनडाँडा क.व.उ.स | पूर्वखोला गा.पा. २ | २,००,०००/- |
| ५ | चिरडाँडा क.व.उ.स | पूर्वखोला गा.पा. २ | १,००,०००/- |
| ६ | रिपखोरिया क.व.उ.स | निस्दी गा.पा. ४ | १,००,०००/- |

२.२. **क्रियाकलापको नाम : सहकारी मार्फत जडीबुटी उत्पादन खेती विस्तार, भण्डारण, प्रशोधन र बजारीकरण (वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : ३ समुह
- विनियोजित वजेट रु. : १५,००,०००/-
- प्रगति : १५ समूह
- खर्च रकम रु.: १५,००,०००/-
- कार्य संचालन भएको स्थान : १ वटा क.व.मा १५०० वटा टिमुरको दरले २२,५०० वटा टिमुर र १ वटा क.व.मा ५०० वटा कागतीको दरले ७५०० गोटा कागती गरी करिब २० हे. रोपण गरिएको

| सि.नं | कवुलियती वन समूहको नाम | ठेगाना | कैफियत |
|---|---|---|---|
| १ | फलम्जु भञ्ज्याङ्ग क.व.उ.स. | निस्दी गा.पा. ६ | १,००,०००/- |
| २ | दार्सीङ्ग पोखरी | निस्दी गा.पा. ६ | १,००,०००/- |
| ३ | चौतारी | निस्दी गा.पा. ६ | १,००,०००/- |
| ४ | घ्वारपाल पोखरी | निस्दी गा.पा. ६ | १,००,०००/- |
| ५ | लेकपोखरी | निस्दी गा.पा. ६ | १,००,०००/- |
| ६ | घ्वारपालडाँडा | निस्दी गा.पा. ६ | १,००,०००/- |
| ७ | करामदीप | निस्दी गा.पा. ६ | १,००,०००/- |
| ८ | ढामक्रेम डाँडा | निस्दी गा.पा. ६ | १,००,०००/- |
| ९ | मैावा डाँडा | निस्दी गा.पा. ६ | १,००,०००/- |
| १० | सत्यवती | निस्दी गा.पा. ६ | १,००,०००/- |
| ११ | लोच्चोपोखरा | निस्दी गा.पा. ६ | १,००,०००/- |
| १२ | माझपोखरी | निस्दी गा.पा. ६ | १,००,०००/- |
| १३ | वन काफल | निस्दी गा.पा. ६ | १,००,०००/- |
| १४ | घोरपाल थुम्का | निस्दी गा.पा. ६ | १,००,०००/- |
| १५ | ढिकपोखरा | निस्दी गा.पा. ६ | १,००,०००/- |

२.३. **क्रियाकलापको नाम : जडीबुटी बिरुवा उत्पादन (हजारमा)(वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : २०,००० हजार
- विनियोजित वजेट रु. : ५,००,०००/-
- प्रगति : २०,००० हजार (बिभिन्न प्रजाती)।
- खर्च रकम रु.: ५,००,०००/-
- कार्य संचालन भएको स्थान : तानसेन सब डिभिजन वन कार्यालय अन्तर्गत।

**२.४. क्रियाकलापको नाम : नर्सरी मर्मत(वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : १ वटा
- विनियोजित वजेट रु. : ३५,०००/-
- प्रगति : १ वटा
- खर्च रकम रु.: ३५,०००/-
- कार्य संचालन भएको स्थान : रामपुर सब डिभिजन वन कार्यालय अन्तर्गत।

**२.५. क्रियाकलापको नाम : जडीबुटी भण्डारण तथा प्रशोधन केन्द्र स्थापना (वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : १ वटा
- विनियोजित वजेट रु. : १०,००,०००/-
- प्रगति : ४ वटा।
- खर्च रकम रु.: १०,००,०००/-
- कार्य संचालन भएको स्थान :

| सि.नं | समूहको नाम | ठेगाना | कैफियत |
|---|---|---|---|
| १ | चिरडाँडा क.व.उ.स | पूर्वखोला गा.पा.-२ | ३,००,०००/- |
| २ | ठूलोचौर क.व.उ.स | रिब्दिकोट गा.पा.-७ | १,००,०००/- |
| ३ | भेर्मा क.व.उ.स | निस्दी गा.पा.-४ | ३,००,०००/- |
| ४ | बिरदी गैरा क.व.उ.स | निस्दी गा.पा.-४ | ३,००,०००/- |

**(३) वातावरण विभाग** :

**३.१. क्रियाकलापको नाम : शहरी हरित पार्क स्थापना (वन तथा वातावरण संरक्षण निर्माण)**

- वार्षिक लक्ष्य/परिमाण : १ वटा
- विनियोजित वजेट रु. : ५,००,०००/-
- प्रगति : १ वटा
- खर्च रकम रु.: ५,००,०००/-
- कार्य संचालन भएको स्थान : कुसुमडाँडा, तानसेन न.पा.७।

**३.२. क्रियाकलापको नाम : दुर्गा मन्दिर पर्यटन पुर्वाधार विकास (रामपुर न.पा. ५ पाल्पा) (संघ शसर्त अनुदान)**

- वार्षिक लक्ष्य/परिमाण : १ पटक
- विनियोजित वजेट रु. : १०,००,०००/-
- प्रगति : १ पटक
- खर्च रकम रु.: १०,००,०००/-
- कार्य संचालन भएको स्थान : रामपुर सब डिभिजन वन कार्यालय अन्तर्गत।

**३.३. क्रियाकलापको नाम : माईथान महामृत्युनजय शिवासन पर्यटन पुर्वाधार विकास (बगनासकाली गा. पा.,पाल्पा) (संघ शसर्त अनुदान)**

- वार्षिक लक्ष्य/परिमाण : १ पटक
- विनियोजित वजेट रु. : १०,००,०००/-
- प्रगति :
- खर्च रकम रु.: १०,००,०००/-
- कार्य संचालन भएको स्थान : तानसेन सब डिभिजन वन कार्यालय अन्तर्गत।

**चालु शिर्षकका कार्यक्रमहरु तर्फ :**

**(१) राष्ट्रिय वन विकास तथा ब्यबस्थापन कार्यक्रम तर्फ :**

**१.१. क्रियाकलापको नाम : वन डढेलो नियन्त्रण तथा व्यवस्थापन योजना कार्यान्वयन (वातावरण संरक्षण/सरसफाइ कार्यक्रम)**

- वार्षिक लक्ष्य/परिमाण : १ जिल्ला
- विनियोजित वजेट रकम रु. : २,००,०००/-
- प्रगति : १ जिल्ला
- खर्च रकम रु. : १,४०,०००/-
- कार्य संचालन भएको स्थान : डिभिजन वन कार्यालय तथा ८ वटै सब डिभिजन वन कार्यालय अन्तर्गत

**(२) जडीबुटी विकास कार्यक्रम**

**१.१. क्रियाकलापको नाम : फोकल टिम बैठक (वातावरण संरक्षण/सरसफाइ कार्यक्रम)**

- वार्षिक लक्ष्य/परिमाण : १ पटक
- विनियोजित वजेट रकम रु. : १५,०००/-
- प्रगति : १ पटक
- खर्च रकम रु. : १५,०००/-
- कार्य संचालन भएको स्थान : डिभिजन वन कार्यालय

**(३) वातावरण विभाग**

**१.१. क्रियाकलापको नाम :सार्वजनिक स्थल, गाउँ, नगर सरसफाई कार्यक्रम (वातावरण संरक्षण/सरसफाइ कार्यक्रम)**

- वार्षिक लक्ष्य/परिमाण : १ पटक
- विनियोजित वजेट रकम रु. : ५०,०००/-
- प्रगति : १ पटक
- खर्च रकम रु. : ५०,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान : तानसेन नगरपालिका अन्तर्गत पाल्पा विकास केन्द्रद्वारा सम्पन्न।

**१.२. क्रियाकलापको नाम : फोहरलाई श्रोतमा नै बर्गीकरण गरि व्यवस्थापन गर्न जनचेतना अभिबृद्धि गराउने (वातावरण संरक्षण/सरसफाई कार्यक्रम)**

- वार्षिक लक्ष्य/परिमाण : १ जिल्ला
- विनियोजित वजेट रकम रु. : ३५,०००/-
- प्रगति : १ जिल्ला
- खर्च रकम रु. : ३५,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान : तानसेन नगरपालिका अन्तर्गत पाल्पा विकास केन्द्रद्धारा सम्पन्न ।

**१.३ क्रियाकलापको नाम : प्लाष्टिकको झोलाको बिकल्पको रुपमा बैकल्पिक झोला प्रयोगलाई प्रवर्द्धन तथा प्रदुषण नियन्त्रण सम्बन्धि अन्तरक्रिया ( वातावरण संरक्षण/सरसफाइ कार्यक्रम)**

- वार्षिक लक्ष्य/परिमाण : १ वटा
- विनियोजित वजेट रकम रु. : ५०,०००/-
- प्रगति : १ वटा
- खर्च रकम रु. : ५०,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान : तानसेन नगरपालिका अन्तर्गत पाल्पा विकास केन्द्रद्धारा सम्पन्न ।

# संघीय शर्सत हस्तान्तरित कार्यक्रम वार्षिक प्रगति

रकम रु. लाखमा

| | | | बार्षिक लक्ष्य | | | बार्षिक प्रगति | | | कै |
|---|---|---|---|---|---|---|---|---|---|
| क्र.स. | कार्यक्रम रक्रियाकलाप | इकाई | परिमाण | भार | बजेट | परिमाण | खर्च रकम | भारित | |
| | (अ) पूँजीगत खर्च अन्तर्गतका कार्यक्रमहरु | | | | | | | | |
| | राष्ट्रिय वन विकास तथा बेवास्थापन कार्यक्रम | | | | | | | | |
| १ | वन अतिक्रमण हटाई बेवास्थापन | हे | २ | १.९३ | २ | ०.७ | १.२९९२ | १.२५ | |
| २ | पर्यापर्यटन प्रवर्धन | संख्या | ४ | ७.७ | ८ | ४ | ८ | ७.७० | |
| ३ | सामुदायिक वनमा वैज्ञानिक वन बेवास्थापन | संख्या | २ | ७.७ | ८ | २ | ८ | ७.७० | |
| ४ | अग्नी नियन्त्रण सम्वन्धि सामग्री, उपकरण तथा सामान खरिद एवं वितरण | सेट | १ | १.९३ | २ | १ | १.९९८९ | १.९३ | |
| ५ | फलफुल विरुवा उत्पादन | वटा | १०००० | ९.६३ | १० | ७७५० | ९.९७५४ | ९.६१ | |
| ६ | अन्य विरुवा उत्पादन | वटा | १०००० | ४.८१ | ५ | १०००० | ५ | ४.८१ | |
| | जडिबुटी विकास कार्यक्रम | | | | | | | | |
| ५ | जडिबुटी उत्पादन, खेती विस्तार, भण्डारण | समूह | ५ | ८.६३ | १० | ३ | १०.०० | ९.६३ | |
| ६ | सहकारी मार्फत जडिबुटीका उत्पादन, खेती विस्तार, भण्डारण, प्रशोधन र बजारीकरण | समूह | ३ | १४.४४ | १५ | ० | १५.०० | १४.४४ | |
| ७ | जडिबुटी विरुवा उत्पादन | वटा | २०००० | ४.८१ | ५ | २०००० | ५ | ४.८१ | |
| ८ | नर्सरी मर्मत | वटा | १ | ०.३४ | ० | १ | ०.३५ | ०.३४ | |
| ९ | जडिबुटी भण्डारण तथा प्रशोधन केन्द्र स्थापना | वटा | १ | ९.६३ | १० | ४ | ९.९९४ | ९.६२ | |
| | वातावरण विभाग | | | | | | | | |
| १० | सहरी हरित पार्क स्थापन | वटा | १ | ४.८१ | ५ | १ | ५.००० | ४.८१ | |
| ११ | दुर्गा मन्दिर पर्यटन पूर्वाधार विकास, रामपुर ५, पाल्पा | पटक | १ | ९.७३ | १० | १ | १०.००० | ९.६३ | |

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| १२ | माईथान महामृत्युन्जय शिवासन पर्यटन पूर्वाधार विकास | पटक | १ | ९.६३ | १० | १ | १०.००० | ९.६३ | |
| | (अ) पूँजीगत खर्च कार्यक्रमको जम्मास | | | ९६.६२ | १००.३५ | | ९९.६१७५ | ९५.९१ | |
| | आ) चालु खर्च अन्तर्गतका कार्यक्रमहरु | | | | | | | | |
| | राष्ट्रिय वन विकास तथा बेवास्थापन कार्यक्रम | | | | २ | | | ०.०० | |
| १३ | वन डढेलो नियन्त्रण तथा बेवास्थापन योजना कार्यन्वयन | जिल्ला | १ | १.९३ | २ | ०.७५ | १.४ | १.३५ | |
| | जडिबुटी विकास कार्यक्रम | | | | | | | | |
| १४ | फोकल टिम वैठक | पटक | १ | ०.१४ | ०.१५ | १ | ०.१५ | ०.१४ | |
| | वातावरण विभाग | | | | | | | | |
| १५ | सार्वजनिक स्थल, गाउँ नगर सरसफाई कार्यक्रम | पटक | १ | ०.४८ | ०.५० | १ | ०.५० | ०.४८ | |
| १६ | फोहोरलाई श्रोतमा नै वर्गिकरण गरी बेवास्थापन गर्न जनचेतना अभिबृदी गराउने | जिल्ला | १ | ०.३४ | ०.३५ | १ | ०.३५ | ०.३४ | |
| १७ | प्लास्टिक झोलाको विकल्पको रुपमा वैकल्पिक झोला प्रयोगलाई प्रवर्दन तथा प्रदुषण नियन्त्रण सम्वन्धि अन्तर्क्रिया | वटा | १ | ०.४८ | ०.५० | १ | ०.५० | ०.४८ | |
| १८ | (आ) चालु खर्च कार्यक्रमको जम्मास | | | ३.३७ | ३.५० | | २.९० | २.७९ | |
| | कुल जम्मा खर्च | | | १०० | १०३.८५ | | १०२.५१७५ | ९८.७१ | |

भौतिक : ९९%

वित्तिय : ९८.७१%

# वन, वन्यजन्तु, जैविक विविधता संरक्षण तथा व्यवस्थापन

**पूँजीगत शिर्षकका कार्यक्रमहरु तर्फ :**

**(१) वन वातावरण तथा जैविक विविधता संरक्षण :**

**१.१. क्रियाकलापको नाम : सिमसार क्षेत्रहरुको संरक्षण ,पोखरी निर्माण कार्यक्रम**

- वार्षिक लक्ष्य/परिमाण : १ क्षेत्र
- विनियोजित वजेट रकम रु. : १०,००,०००/-
- प्रगति : ३ गोटा
- खर्च रकम रु. : ९,१०,५६९.६४/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण :

| सि.नं | नाम | ठेगाना | कैफियत |
|---|---|---|---|
| १ | सत्यवती मन्दिर संरक्षण समिति (बहादुरपुरको सत्यवती ताल) | माथागढी गा.पा.-८ | २,५०,०००/- |
| २ | बँदेलपोखरी सा.व.उ.स मार्फत बँदेलपोखरी ताल | तिनाउ गा.पा.-२ | २,५०,०००/- |
| ३ | प्रभाष ताल | तानसेन न.पा.-७ | ५,००,०००/- |

**१.२. क्रियाकलापको नाम : सडक सौन्दर्यकरण कार्यक्रम**

- वार्षिक लक्ष्य/परिमाण : १ क्षेत्र
- विनियोजित वजेट रकम रु. : ५,००,०००/-
- प्रगति : १ क्षेत्र
- खर्च रकम रु. : ५,००,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान : रामपुर सब डिभिजन वन कार्यालय अन्तर्गत १७५ वटा असोकका विरुवा ०.८७५ कि.मि. मा रोपण गरिएको ।

**१.३. क्रियाकलापको नाम : जैविक विविधता संरक्षण र प्रवर्धन (१० लाख)**

**क) चाँपको व्यवस्थापन, संरक्षण तथा प्रचार प्रसार आदी**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : १,००,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : १,००,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : रिब्दिकोट सब डिभिजन वन कार्यालय अन्तर्गत मधुवन सा.व.उ.स.मा ।

**ख) क्रियाकलापको नाम : सुचना केन्द्र व्यवस्थापन, अभिलेखीकरण आदी**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : १,००,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : १,००,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय

**ग) क्रियाकलापको नाम : पाल्पा जिल्लामा चुनढुंगा खानीको पारिस्थितिक प्रभावको अध्ययन**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : ४,५०,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : ४,५०,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय

**घ) क्रियाकलापको नाम : पाल्पा जिल्लामा कबुलियती वनको सामाजिक, आर्थिक तथा वातावरणीय प्रभावको अध्ययन**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : ३,५०,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : ३,५०,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय

**१.४. क्रियाकलापको नाम : वृक्षारोपण कार्यक्रम (नर्सरी,विरुवा उत्पादन,वृक्षारोपण,निजी तथा कृषि वन आदी) (३५ लाख)**

**क) क्रियाकलापको नाम : नर्सरी स्थापना, मर्मत, संचालन**

- वार्षिक लक्ष्य/परिमाण : ३ वटा
- विनियोजित वजेट रकम रु. : २,००,०००/-
- प्रगति : ३ वटा
- खर्च रकम रु. : २,००,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान : तिनाउ स.डि.व.का., तानसेन स.डि.व.का. र माथागढी स.डि.व.का. अन्तर्गत

**ख) क्रियाकलापको नाम : विरुवा उत्पादन**

- वार्षिक लक्ष्य/परिमाण : २०० हजार
- विनियोजित वजेट रकम रु. : २०,००,०००/-
- प्रगति : २०० हजार
- खर्च रकम रु. : २०,००,०००/-
- बिरुवा उत्पादन भएको स्थान :

  - निस्दी सब डिभिजन वन कार्यालय अन्तर्गत १०,००० गोटा
  - तिनाउ सब डिभिजन वन कार्यालय अन्तर्गत ९०,००० गोटा
  - माथागढी सब डिभिजन वन कार्यालय अन्तर्गत २५,००० गोटा
  - रामपूर सब डिभिजन वन कार्यालय, अन्तर्गत २५,००० गोटा
  - तानसेन सब डिभिजन वन कार्यालय अन्तर्गत ५०,००० गोटा

**ग) क्रियाकलापको नाम : निजी वन तथा कृषि वन प्रवर्धन कार्यक्रम**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : १,५०,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : १,५०,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान : तिनाउ सब डिभिजन वन कार्यालय अन्तर्गत

**घ) क्रियाकलापको नाम : वृक्षारोपण**

- वार्षिक लक्ष्य/परिमाण : १० हे.
- विनियोजित वजेट रकम रु. : १०,००,०००/-
- प्रगति : १० हेक्टर
- खर्च रकम रु. : १०,००,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान : तिनाउ स.डि.व.का, निस्दी स.डि.व.का, रिब्दिकोट स.डि.व.का, रामपुर स.डि.व.का, माथागढी स.डि.व.का अन्तर्गत

**ङ) क्रियाकलापको नाम : गत वर्ष गरिएको वृक्षारोपण गोडमेल, पुनरोपण, संरक्षण, तारवार**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : १,५०,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : १,३०,०००/-
- कार्य संचालन/सम्पन्न भएको स्थान : निस्दी स.डि.व.का र रिब्दिकोट स.डि.व.का अन्तर्गत

**(२) वनको वैज्ञानिक व्यवस्थापन र दिगो व्यवस्थापन** :

**२.१. क्रियाकलापको नाम : सामुदायिक वन व्यवस्थापन**

- वार्षिक लक्ष्य/परिमाण : २ क्षेत्र/जिल्ला
- विनियोजित वजेट रकम रु. : १०,००,०००/-
- प्रगति : २ वटा
- खर्च रकम रु. : ९,६८,९१८.७५ /-
- कार्य संचालन/सम्पन्न भएको स्थान : रिब्दिकोट स.डि.व.का अन्तर्गत पाखुरे सा.व.उ.स र दर्लाम सा.व.उ.स

**चालु शिर्षकका कार्यक्रमहरू तर्फ**

**(१) वन वातावरण तथा जैविक विविधता संरक्षण :**

**१.१. कार्यक्रमको नाम : विभिन्न दिवश,समारोह,प्रचार,प्रसार आदी (१० लाख)**

**क) क्रियाकलापको नाम : प्रचार प्रसार सामाग्री उत्पादन तथा वितरण (होर्डिङ वोर्ड, पर्चा, प्याम्पलेट, क्यालेन्डर, ब्रोसर, भित्तेलेखन, फ्लेक्स आदि)**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : ३,००,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : २,९८,७४०/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय अन्तर्गत

**ख) क्रियाकलापको नाम : विभिन्न दिवस, समारोह, महोत्सव, वन्यजन्तु सप्ताहा, डढेलो सप्ताहा आदि**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : १,००,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : ६६,३६० /-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय अन्तर्गत

**ग) क्रियाकलापको नाम : पत्रपत्रिका, रेडियो, एफएम मार्फत सन्देशमुलक सुचना प्रकाशन**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : १,००,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : ८४,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय तथा ८ वटै सव डिभिजन वन कार्यालय अन्तर्गत

**घ) क्रियाकलापको नाम : वार्षिक प्रगती पुस्तिका तयारी,छपाई**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : ९५,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : ९५,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय

**ङ) क्रियाकलापको नाम : वन समन्वय समिति बैठक (वार्षिक कार्यक्रमहरु, प्रगती छलफल)**

- वार्षिक लक्ष्य/परिमाण : ३ पटक
- विनियोजित वजेट रकम रु. : ९०,०००/-
- प्रगति : २ पटक
- खर्च रकम रु. : ९०,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय

**च) क्रियाकलापको नाम : प्रदेश सरकार तथा संघीय सरकार तर्फको वार्षिक कार्यक्रम सार्वजनिकरण**

- वार्षिक लक्ष्य/परिमाण : १ संख्या
- विनियोजित वजेट रकम रु. : ५०,०००/-
- प्रगति : १ संख्या
- खर्च रकम रु. : ५०,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय

**छ) क्रियाकलापको नाम : कबुलियती वनमा सफलताको कथाको भिडियो (Documentary) तयारी**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : ९५,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : ९५,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय

**ज) क्रियाकलापको नाम : आवश्यकता अनुसार विषयगत सरोकारवालाहरुको बैठक, स्टाफ मिटिङ**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : ५५,०००/-
- प्रगति : २ गोटा
- खर्च रकम रु. : ५०,५०० /-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय

**झ) क्रियाकलापको नाम : website update/renew**

- वार्षिक लक्ष्य/परिमाण : १ प्याकेज
- विनियोजित वजेट रकम रु. : ३५,०००/-
- प्रगति : १ प्याकेज
- खर्च रकम रु. : ३४,४६५/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : डिभिजन वन कार्यालय

**ञ) क्रियाकलापको नाम : वन तथा वन्यजन्तु संरक्षण, वन डढेलो, चोरी सिकारी नियन्त्रण सम्बन्धी स्कूल शिक्षा कार्यक्रम**

- वार्षिक लक्ष्य/परिमाण : ८ संख्या
- विनियोजित वजेट रकम रु. : ८०,०००/-
- प्रगति : ४ संख्या
- खर्च रकम रु. : ३०,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण : निस्दी स.डि.व.का., तानसेन स.डि.व.का., रामपुर स.डि.व.का. अन्तर्गत

**१.२. कार्यक्रमको नाम : वन व्यवस्थापन (रा.व.,सा.व.,क.व.,धा.व., लगाएतको कार्ययोजना तयारी, पुनरावलोकन, आई ई ई अनुगमन आदी) (५० लाख)**

**क) क्रियाकलापको नाम : सामुदायिक वन गठन तथा वन हस्तान्तरण,कार्ययोजना तयारी**

- वार्षिक लक्ष्य/परिमाण : ५ समुह
- विनियोजित वजेट रकम रु. : ७५,०००/-
- प्रगति : ६ समुह
- खर्च रकम रु. : ७५,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण :

| सि.नं | सा.व.उ.स.को नाम | ठेगाना | कैफियत |
|---|---|---|---|
| १ | धैरेनी पारीडाँडा सा.व.उ.स | रामपुर न.पा.-१ | |
| २ | शिकारकोट सा.व.उ.स | माथागढी गा.पा.-३ | |
| ३ | खाडले झडेकडाँडा सा.व.उ.स | माथागढी गा.पा.-३ | |
| ४ | घुर्सि वर डाँडा सा.व.उ.स | निस्दी गा.पा.-३ | |
| ५ | रम्भादेवी सा.व.उ.स | रम्भा गा.पा.-५ | |
| ६ | अर्वसी सा.व.उ.स | रामपुर न.पा.-१२ | |

**ख) क्रियाकलापको नाम : सामुदायिक वनको कार्ययोजना पुनरावलोकन**

- वार्षिक लक्ष्य/परिमाण : ७० समुह
- विनियोजित वजेट रकम रु. : ७,००,०००/-
- प्रगति : ७२ समुह
- खर्च रकम रु. : ७,००,०००/-
- कार्यक्रम सम्पन्न भएको स्थानको विवरण :

| सि.नं | सा.व.उ.स.को नाम | ठेगाना | कैफियत |
|---|---|---|---|
| १ | बराडदी कोहल सा.व.उ.स. | तानसेन न.पा.-९ | तानसेन सब डिभिजन अन्तर्गत |
| २ | रानीवन सा.व.उ.स. | बगनाशकाली गा.पा.-३ | |
| ३ | शिखरडाँडा सा.व.उ.स. | तानसेन न.पा.-९ | |
| ४ | भुसालडाँडा सा.व.उ.स. | तानसेन न.पा.-१ | |
| ५ | चमेरेडाँडा सा.व.उ.स. | तानसेन न.पा.-१२ | |
| ६ | काभ्रेडाँडा बयरखर्क सा.व.उ.स. | तानसेन न.पा.-९ | |
| ७ | सल्लेरी सा.व.उ.स. | तानसेन न.पा.-१२ | |
| ८ | तल्लो श्रीनगर सा.व.उ.स. | तानसेन न.पा.-१ | |
| ९ | बेनीडाँडा सा.व.उ.स. | तानसेन न.पा.-९ | |

| | | | |
|---|---|---|---|
| १० | धारादीपाखा,राम्चे सा.व.उ.स. | माथागढी गा.पा.-४ | माथागढी सब डिभिजन वन कार्यालय अन्तर्गत |
| ११ | हात्तिलुङ्ग सा.व.उ.स. | माथागढी गा.पा.-५ | |
| १२ | थामडाडा सा.व.उ.स. | माथागढी गा.पा.-७ | |
| १३ | गल्धा जामुनडाडा सा.व.उ.स. | माथागढी गा.पा.-४ | |
| १४ | विरुवा सा.व.उ.स. | माथागढी गा.पा.-१ | |
| १५ | चन्द्र वन सा.व.उ.स. | माथागढी गा.पा.-१ | |
| १६ | सोरेकोट सा.व.उ.स. | माथागढी गा.पा.-४ | |
| १७ | माथागढी सा.व.उ.स. | माथागढी गा.पा.-५ | |
| १८ | धर्मशाला लिउकिदेवी सा.व.उ.स. | माथागढी गा.पा.-८ | |
| १९ | हरियाली सा.व.उ.स. | रामपुर न.पा.-३ | रामपुर सब डिभिजन वन कार्यालय अन्तर्गत |
| २० | बासपानी सा.व.उ.स. | रामपुर न.पा.-४ | |
| २१ | ठाडीउकाली सुर्यबास सा.व.उ.स. | रामपुर न.पा.-७ | |
| २२ | रानीवन सा.व.उ.स. | रामपुर न.पा.-८ | |
| २३ | पोखरीडाडा सा.व.उ.स. | रामपुर न.पा.-८ | |
| २४ | गडाहा,ढाँड र भरय थान  सा.व.उ.स. | रामपुर न.पा.-६ | |
| २५ | एम्लेपुच्छार सा.व.उ.स. | रामपुर न.पा.-८ | |
| २६ | धनसारे सा.व.उ.स. | रामपुर न.पा.-१२, ११ | |
| २७ | जल्केनी खोला सा.व.उ.स. | रामपुर न.पा.-४ | |
| २८ | पिपलपाटा सा.व.उ.स. | रामपुर न.पा.-८ | |
| २९ | खैरेनी सा.व.उ.स. | रामपुर न.पा.-६ | |
| ३० | गैरी वर पिपल | रामपुर न.पा.-८ | |
| ३१ | हुमिन रानिवन सा.व.उ.स. | रम्भा गा.पा.-३ | रम्भा सब डिभिजन वन कार्यालय अन्तर्गत |
| ३२ | तेम्रो ढुङ्गा सा.व.उ.स. | रम्भा गा.पा.-२ | |
| ३३ | मजुवा सा.व.उ.स. | रम्भा गा.पा.-१ | |
| ३४ | रनेवास सा.व.उ.स. | रम्भा गा.पा.-२ | |
| ३५ | वडहरखोला सा.व.उ.स. | रम्भा गा.पा.-४ | |
| ३६ | स्यालडाडा ठुलोवन सा.व.उ.स. | रम्भा गा.पा.-१ | |
| ३७ | जोर्ते सा.व.उ.स. | पूर्वखोला गा.पा.-१ | |
| ३८ | ढोलार सा.व.उ.स. | पूर्वखोला गा.पा.-१ | |
| ३९ | अर्सेदी र कंरगेटार सा.व.उ.स. | रम्भा गा.पा.-१ | |

| | | | |
|---|---|---|---|
| ४० | सिरिखोला सा.व.उ.स. | रैनादेवी छहरा गा.पा.-४ | रिब्दिकोट सब डिभिजन वन कार्यालय अन्तर्गत |
| ४१ | धैयार दर्लाल आरुखरक सा.व.उ.स. | रैनादेवी छहरा गा.पा.-४ | |
| ४२ | चोरगोठ झेवर खोला सा.व.उ.स. | रैनादेवी छहरा गा.पा.-४ | |
| ४३ | पूर्णकोट सा.व.उ.स. | रिब्दीकोट गा.पा.-४ | |
| ४४ | भर्लेसेन पोखरी सा.व.उ.स. | रैनादेवी छहरा गा.पा.-३ | |
| ४५ | पताल सल्लेरी सा.व.उ.स. | रिब्दीकोट गा.पा.-४ | |
| ४६ | तालतुङ्ग सा.व.उ.स. | रिब्दीकोट गा.पा.-८ | |
| ४७ | भगवती सा.व.उ.स. | रिब्दीकोट गा.पा.-५ | |
| ४८ | भालुवन सा.व.उ.स. | रिब्दीकोट गा.पा.-७ | |
| ४९ | बुरु भञ्ज्याङ सा.व.उ.स. | निस्दी गा.पा.-४ | निस्दी सब डिभिजन वन कार्यालय अन्तर्गत |
| ५० | सुकेकोट सा.व.उ.स. | निस्दी गा.पा.-२ | |
| ५१ | मुगिल्झा सा.व.उ.स. | निस्दी गा.पा.-९ | |
| ५२ | रि गहिरा सा.व.उ.स. | निस्दी गा.पा.-४ | |
| ५३ | लामडाँडा भाङ्गबारी सा.व.उ.स. | निस्दी गा.पा.-७ | |
| ५४ | आइपति सा.व.उ.स. | निस्दी गा.पा.-४ | |
| ५५ | भोटेगौरी सा.व.उ.स. | निस्दी गा.पा.-४ | |
| ५६ | गैरी भञ्ज्याङ सा.व.उ.स. | निस्दी गा.पा.-२ | |
| ५७ | चैउर डाँडा सा.व.उ.स. | निस्दी गा.पा.-६ | |
| ५८ | भुतखोला सा.व.उ.स. | तिनाउ गा.पा.-३ | तिनाउ सब डिभिजन वन कार्यालय अन्तर्गत |
| ५९ | रानीढुङ्गा सा.व.उ.स. | तिनाउ गा.पा.-१ | |
| ६० | वनघुम्री ठुलोकोहल सा.व.उ.स. | तिनाउ गा.पा.-१ | |
| ६१ | ज्यामिरे सा.व.उ.स. | तिनाउ गा.पा.-३ | |
| ६२ | चङ्खेरानीवन सा.व.उ.स. | तिनाउ गा.पा.-५ | |
| ६३ | भिराले देउराली सा.व.उ.स. | तिनाउ गा.पा.-६ | |
| ६४ | सिर्जना सा.व.उ.स. | तिनाउ गा.पा.-६ | |
| ६५ | जामुने सा.व.उ.स. | रैनादेवी गा.पा.-८ | रैनादेवी छहरा सब डिभिजन वन कार्यालय अन्तर्गत |
| ६६ | बाघपानी सा.व.उ.स. | रैनादेवी गा.पा.-८ | |
| ६७ | टोप झाडी गहिरा महिला सा.व.उ.स. | रैनादेवी गा.पा.-८ | |
| ६८ | ठुलाकोहल सा.व.उ.स. | रैनादेवी गा.पा.-७ | |
| ६९ | रोकाहा सा.व.उ.स. | रैनादेवी गा.पा.-८ | |
| ७० | सकरखण्डी सा.व.उ.स. | रैनादेवी गा.पा.-८ | |
| ७१ | चमेरे सा.व.उ.स. | रैनादेवी गा.पा.-८ | |
| ७२ | काउसे दोबाटो सा.व.उ.स. | रैनादेवी गा.पा.-८ | |

